# विषेश तथा निश्चित रकम अनुदान सम्बन्धी सूचना

**प्रत्येक ब्यक्तिलाई १ लाख येन** राहत दिईनेछ ।

**आवेदनको प्रकृया सहज गर्न आवेदकले लेख्नुपर्ने कुराहरू सकेसम्म कम गरिएको छ ।**

**कस्तो ब्यक्तिलाई दिने ?**
**सन् २०२० सालको अप्रिल महिनाको २७ तारिख** सम्ममा स्थानीय बासिन्दा रेजिष्टर फाईलमा दर्ता भएको ब्यक्ति

**कहिले देखि आवेदन दिने ?**
आवेदन दर्ता सुरू हुने मिति प्रत्येक स्थानीय सरकारद्वारा निर्णय गरिनेछ र सकेसम्म चाँडैनै आवेदन फारम हुलाक मार्फत पठाईनेछ ।
दर्ता सुरु भएको मितिबाट ३ महिना भित्र आवेदन पेश गर्नुहोस् ।

**आवेदन कसरी दिने ?**
**स्थानीय नगरपालिकाले आवेदकको नाम र जन्ममिति ऊल्लेख गरी आवेदन फारम हुलाक मार्फत पठाईनेछ ।**
**कोरोना भाइरसको सङ्क्रमणबाट बच्नका लागि कृपया हुलाकबाट अथवा अनलाइनबाट आवेदन पेश गर्नुहोस् ।**

| | |
|---|---|
| **हुलाक मार्फत** | **आवेदन फारममा राहत जम्मा गर्ने बैंकको खातानम्बर ऊल्लेख गरी अन्य आवश्यक कागजातहरुसंगै स्थानीय नगरपालिकालाई फिर्ता बुझाउनुहोस् ।** |
| **अनलाईन मार्फत** | **व्यक्तिगत नम्बर कार्ड(माई नम्बर कार्ड)** भएका व्यक्तिहरूले, **"Mynaportal site"**मार्फत अनलाइनबाट **आवेदन** दिन सकिनेछ |

- **प्रत्येक** आवेदन फारममा ऊल्लेख गरिएको **खातानम्बरमा अनुदान रकम जम्मा गरिदिनेछ ।**
- **आफ्नो बैंक खाता नभएका ब्यक्तिले** आवश्यक कागजातहरू सहित **स्थानीय नगरपालि**कामा जानुहोस् । अनुदान रकम त्यहिंको काउन्टरमा वितरण गरिनेछ ।

▶**विस्तृत जानकारीको लागि निम्नलिखित URL अथवा QR कोड हेर्नुहोला**
https://kyufukin.soumu.go.jp

▶**सम्पर्कको लागि** (विषेश तथा निश्चित रकम अनुदान कल सेन्टर)

**०१२०-२६००२०** (टोल-फ्री फोन सेवा समय: मे महिनाको २ तारिख ऊपरान्त (बिदा नभएको र बिदा भएको हरेक दिन ९:००～१८:३०)
**०३-५६३८-५८५५** ( सेवा समय: मे महिनाको १ तारिख सम्म (केवल बिदा नभएको दिनमा मात्रै ९:००～१८:३०)

## ठग देखि सावधान !!

" मद्दत गरिदिन्छु" भन्दै तपाईंको महत्वपूर्ण सम्पत्तिलाई लुट्न खोज्ने ठगहरू हुन सक्छन् । अनुदान दिने सम्बन्धमा जापान सरकार अथवा स्थानीय नगरपालिकाले तल ऊल्लेखित कार्य **【कदापी गर्नेछैन】** ।

- एटिएम(ATM)मार्फत केही कार्य गर्ने अनुरोध गर्ने छैन
- अनुदान रकममा अतिरिक्त कर (चार्ज) लाग्छ भन्दै सो रकम खातामा हालिदिन अनुरोध गर्नेछैन

**यदि शंकास्पद ईमेल पाऊनुभयो भने,URLलाई क्लिक नगर्नुहोस् र फाइलहरू पनि नखोल्नुहोस् ।**

**कुनै कुरामा शंका लाग्ने बित्तिकै अप्ठ्यारो नमानीकन निम्न ऊल्लेखित निकायहरुमा सम्पर्क गरी सल्लाह लिनु होला ।**

▶तपाईं बस्ने स्थानीय नगरपालिका
▶नजिकको पुलिस थाना
▶पुलिससँग सल्लाह गर्नकोलागि फोन् नम्बर [#९११०]
▶उपभोक्ता हट लाइन नम्बर [१८८]
(क्षेत्रीय कोड नचाहिने, तीन वटा अङ्क मात्र)
▶नयाँ कोरोना भाइरस अनुदानसंग सम्बन्धित हट लाइन [०१२०-२१३-१८८] (मे महिनाको १ तारिख पछि बाट)

# धेरै सोधिने प्रश्नहरु

## माई नम्बर कार्ड नभएको ब्यक्तिले अनलाइन आवेदन दिन पाईन्दैन कि ?

अनलाइन मार्फत आवेदन दिनको लागि व्यक्तिगत नम्बर कार्ड (माई नम्बर कार्ड) को आवश्यकता पर्दछ । यदि माई नम्बर कार्ड नभएमा कृपया हुलाक मार्फत आवेदन दिनुहोला ।

## घरेलु हिंसा(DV) का कारणले हाल बसेको ठाउँको र आवास प्रमाण पत्रमा ऊल्लेखित नगरपालिका फरक फरक छ । के गर्दा ठिक होला ?

अनुदान प्राप्त गर्नको लागि,सकभर तुरून्तै अहिले बसेको स्थानीय नगरपालिकामा गएर घरेलु हिंसा(DV)लगायतका कारणले अहिलेको स्थानमा आश्रय लिएर बसेको भन्ने तथ्यको जानकारी गराई आफ्नो अवस्था बारे सु-सुचित गर्नुहोस् ।

विस्तृत जानकारीको लागि कृपया  नगरपालिकामा सम्पर्क गर्नुहोस् ।

## विदेशीलाई पनि अनुदान दिईन्छ कि ?

सन् २०२० सालको अप्रिल महिनाको २७ तारिख सम्ममा स्थानीय बसिन्दा दर्ता फाईलमा नाम भएका व्यक्तिलाई  विदेशी भएपनि अनुदान दिईनेछ ।
यद्दपि,  छोटो अवधिको लागि बसोबास गरेका बिदेशी वा गैर-कानुनी रूपमा बसीरहेका बिदेशीको सम्बन्धमा स्थानीय बासिन्दा रेजिस्टर फाईलमा नाम दर्ता नहुने हुँदा ऊक्त ब्यक्तिले अनुदान पाउँने छैन ।

## आवेदन फारम बाहेक अरू तयार गर्नुपर्ने कागजातहरू छन् कि?

आवेदन बिधि अनुसार निम्न कागजातहरूको आवश्यकता पर्दछ ।

| | |
|---|---|
| **हुलाक मार्फत** | **१)  व्यक्तिगत परिचय प्रमाणित गर्ने कागजातहरू**<br>माई नम्बर कार्ड), गाडीको लाईसेन्स, स्वास्थ्य बिमापत्रहरूको फोटो कपी<br>**२) रकम जम्मा गर्ने बैंक खाता प्रमाणित गर्ने कागजातहरू**<br>बैंक तथा वित्तीय संस्थाको नाम, खाता नम्बर, खातावालको नाम सुनिश्चित गर्ने चेकबुक अथवा एटिएम कार्ड, इन्टरनेट बैंकिंग को कपी ईत्यादि ।(यदि धारा/पानीको शुल्क तिर्न प्रयोग गरिरहेको खाता वा खातावाल प्रमाणित भएमा माथि ऊल्लेखित प्रमाणहरुको आवश्यकता पर्दैन ) |
| **अनलाइन मार्फत** | **२) रकम जम्मा गर्ने बैंक खाता प्रमाणित गर्ने कागजातहरू**<br>※माई नम्बर कार्ड भएको ब्यक्ति  बारे इलेक्ट्रोनिक सहीबाटै प्रमाणित हुनेभएकाले १) व्यक्तिगत परिचय प्रस्ट गर्ने कागजातहरू चाहिंदैन । |

विस्तृत  जानकारीको लागि  यहाँ सम्पर्क गर्नुहोला

**विषेश तथा निश्चित रकम अनुदान कल सेन्टर**

**०१२०-२६००२०**

(मे महिनाको २ तारिख ऊपरान्त)

**०३-५६३८-५८५५** (मे महिनाको १ तारिख सम्म )

首相官邸
Prime Minister's Office of Japan

総務省
Ministry of Internal Affairs and Communications